# सवारी साधन कर ऐन, २०३१

लालमोहर र प्रकाशन मिति
२०३१।६।२०

<u>संशोधन गर्ने ऐन</u>

| | | |
|---|---|---|
| १. | सवारी साधन कर (पहिलो संशोधन) ऐन, २०४१ | २०४१।५।१८ |
| २. | अर्थ सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४७ | २०४७।८।२७ |
| ३. | अर्थ सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५३ | २०५३।८।२६ |
| | | प्रमाणीकरण र प्रकाशन मिति |
| ४. | गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन,२०६६[☺] | २०६६।१०।७ |

## २०३१ सालको ऐन नं. १८

## सवारी साधन कर असूल उपर गर्ने व्यवस्थाको निमित्त बनेको ऐन

**प्रस्तावना** : प्रचलित नेपाल कानून बमोजिम लाग्ने सवारी साधन करको रकम असूल उपर गर्ने कार्यप्रणाली व्यवस्थित गर्न वाञ्छनीय भएकोले,

<u>श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव</u>बाट राष्ट्रिय पंचायतको सल्लाह र सम्मतिले यो ऐन बनाइबक्सेको छ ।

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यस ऐनको नाम "सवारी साधन कर ऐन, २०३१" रहेको छ ।

(२) यो ऐन नेपालभर लागू हुनेछ ।

(३) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "सवारी साधन" भन्नाले यान्त्रिक शक्तिबाट चल्ने स्थलगामी सवारी साधनहरु जस्तै : जीप, कार, लहरी, ट्रक, बस, भ्यान, मिनिवस, मोटरसाइकल, स्कूटर, अटोरिक्सा, टेम्पो आदिलाई सम्झनु पर्छ ।

(ख) "कर" भन्नाले प्रचलित नेपाल कानून बमोजिम लाग्ने सवारी साधन कर सम्झनु पर्छ ।

☺ यो ऐन २०६५ साल जेठ १५ गतेबाट लागू भएको ।

(ग) "करदाता" भन्नाले यो ऐन वा प्रचलित नेपाल कानून बमोजिम कर तिर्नु पर्ने कर्तव्य भएको व्यक्ति सम्झनु पर्छ ।

*(घ) "कर अधिकृत" भन्नाले यस ऐनको प्रयोजनको निमित्त नेपाल सरकारले नियुक्त गरेको कर अधिकृत, प्रमुख कर अधिकृत वा यो ऐन बमोजिम कर अधिकृतको अधिकार प्रयोग गर्न पाउने गरी नेपाल सरकारले नियुक्त गरेको अन्य कुनै अधिकृत सम्झनु पर्छ ।

(ङ) "कर निर्देशक" भन्नाले नेपाल सरकारको कर विभागको महानिर्देशक वा निर्देशक सम्झनु पर्छ ।

३. **कर असूल गर्ने** : सालबसाली वा कुनै एक सालको लागि कुनै सवारी साधनमा कर लगाउने गरी कुनै ऐनबाट व्यवस्था भएमा त्यस्तो कर यो ऐन र यस ऐन अन्तर्गत बनेको नियम बमोजिम कर अधिकृतले असूल उपर गर्नेछ ।

*४. **कर बुझाउने** : (१) प्रत्येक सालको श्रावण १ गतेको दिनमा जुन व्यक्तिको नाममा प्रचलित कानून बमोजिम सवारी साधन दर्ता कायम रहेको छ सोही व्यक्तिबाट सो आर्थिक वर्षको लाग्ने कर असुल गरिनेछ ।

तर आर्थिक वर्ष पूरा नहुँदै नामसारी गरिने सवारी साधनको हकमा नामसारी गरिने महीनासम्म साविकको सवारीधनीबाट र त्यसपछिको महीनाको नामसारी गराई लिने व्यक्तिबाट दामासाहीले लाग्ने कर असूल गरिनेछ ।

(२) करदाताले आफनो नाममा दर्ता भएको सवारी साधनमा लाग्ने कर प्रत्येक आर्थिक वर्षको चैत्र मसान्तसम्म वा दर्ता नवीकरण गर्ने म्याद जुन अघि हुन्छ सो म्यादभित्र बुझाई सक्नु पर्नेछ ।

(३) नयाँ दर्ता गरिने सवारी साधनको हकमा त्यस्तो सवारी साधन दर्ता गराउन अगावै जुन महीनामा भन्सार तिरी छुटाएको छ सोही महीनादेखिको दामासाहीले लाग्ने कर बुझाउनु पर्नेछ ।

५. **दर्ता नवीकरण वा नामसारी गर्न अगावै कर दिनु पर्ने** : सवारी साधनको दर्ता नवीकरण गराउनु वा नामसारी गराउनु पर्दा सो गर्नुभन्दा अगावै त्यस्तो सवारी साधनमा लाग्ने कर तिर्नु पर्नेछ ।

६. **दर्ता गर्ने अधिकारीले कर तिरेको निस्सा हेर्नु पर्ने** : सवारी साधनको नयाँ दर्ता गर्ने, दर्ता नवीकरण गर्ने वा नामसारी गरी दिने अधिकारीले सो गर्नु भन्दा अगावै कर तिरेको निस्सा जाँचीकन मात्र गरी दिनु पर्नेछ ।

---
* पहिलो संशोधनाद्वारा संशोधित ।

७. **जरिवाना गर्ने** : दफा ४ बमोजिमको म्यादभित्र करको रकम दाखिल नगरेमा कर अधिकृतले देहाय बमोजिम जरिवाना गर्नेछ :-

(क) दाखिल गर्नु पर्ने म्याद नाघेको पहिलो तीस दिनसम्मलाई कर रकमको पाँच प्रतिशतसम्मका दरले ।

(ख) त्यस पछिको पैंतालीस दिनसम्मलाई कर रकमको दश प्रतिशतसम्मका दरले ।

(ग) त्यसपछि सो आर्थिक वर्षको अन्तसम्मलाई कर रकमको बीस प्रतिशतसम्मका दरले ।

८. **कर तथा जरिवानाको रकम असूल गर्ने** : (१) यस ऐन बमोजिम लाग्ने कर र जरिवानाको रकम दफा ७ को खण्ड (ग) मा तोकिएको म्यादभित्र दाखिल नगरेमा कर अधिकृतले कर लागेको सवारी साधन रोक्का गरी उक्त सवारी साधन लिलाम बिक्री गरी सो रकम असुल उपर गरिनेछ ।

(२) उपदफा (१) बमोजिम लिलाम बिक्री गर्दा पनि सबै रकम उपर हुन नसकेमा बाँकी रकम नेपाल सरकारले तोकेको अधिकारी वा कार्यालयबाट प्रचलित नेपाल कानूनको कार्यप्रणाली बमोजिम त्यस्तो करदाताको जायजात गरी असुल उपर गरिनेछ ।

(३) उपदफा (१) वा (२) बमोजिम कारवाई गरी असूल गर्दा असूल गर्नु पर्ने रकम भन्दा बढी रकम असुल हुन आएमा बढी भएजति रकम धरौटीमा आम्दानी बाँधिनेछ र यस्तो धरौटी रकम धरौटीमा रहेको दुई वर्षभित्र सम्बन्धित करदाताले भुक्तानी लिन सक्नेछ । सो म्यादभित्र भुक्तानी लिन नआएमा त्यस्तो धरौटी रकम नेपाल सरकार लाग्नेछ ।

(४) उपदफा (१) वा (२) बमोजिम लिलाम वा जायजातको कारवाई शुरु हुनु भन्दा अगावै करदाताले आफूलाई लाग्ने ठहरेको कर र जरिवानाको रकम बुझाउन ल्याएमा सो रकमको दश प्रतिशतका दरले थप जरिवाना समेत लगाई असुल गर्न सकिनेछ ।

९. **पुनरावेदन** : यस ऐन अन्तर्गत कर अधिकृतले दिएको आदेशमा चित्त नबुझ्ने व्यक्तिले त्यस्तो आदेश पाएको मितिले पैंतीस दिनभित्र राजस्व न्यायाधिकरणमा पुनरावेदन दिन सक्नेछ ।

१०. **समिति गठन गर्ने** : यो ऐन वा प्रचलित नेपाल कानून बमोजिम लाग्ने कर निश्चित गर्नको लागि सवारी साधनको किसिम, स्तर वा क्षमता छुट्याउन समय समयमा आवश्यकता अनुसार नेपाल सरकारले समिति गठन गर्न सक्नेछ । उक्त समितिका सदस्यहरु, काम कारवाई र कार्यविधि गठन आदेशमा तोकिएबमोजिम हुनेछ ।

❃११. **कर छुट हुने** : यस ऐनको अन्य दफाहरुमा जुनसुकै कुरा लेखिएको भए तापनि देहायका सवारी साधनमा कर लाग्ने छैन :-

(क) नेपाल सरकारको नाममा दर्ता भएको ।

(ख) कुटनैतिक सुविधा प्राप्त व्यक्ति वा नियोगको नाममा दर्ता भएको ।

(ग) नेपाल सरकारले कर नलाग्ने गरी सम्झौता गरेका विदेशी नागरिक वा आयोजना र अन्तर्राष्ट्रिय संस्थाको नाममा दर्ता भएको ।

▲(घ) गाउँ विकास समिति, नगरपालिका वा जिल्ला विकास समितिको नाममा दर्ता भएको ।

(ङ) मुनाफा गर्ने उद्देश्य नभएको नेपाल सरकारबाट स्वीकृति प्राप्त सामाजिक, धार्मिक वा शिक्षण संस्थाको नाममा दर्ता भएको ।

(च) सवारी साधन बिग्रेको वा अन्य कुनै कारणबाट सो सवारी साधन चलाउन नपाएको भनी नेपाल सरकारले ठहऱ्याएको कुनै व्यक्ति वा संस्थाको नाममा दर्ता भएको ।

✰११क. **मिन्हा दिन सक्ने** : यस ऐनबमोजिम सवारी साधनमा लागेको जरिवाना पुरा वा आंशिक रुपमा मिन्हा दिनुपर्ने कुनै कारण वा अवस्था देखेमा नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी मिन्हा दिन सक्नेछ ।

⁂१२. **अधिकार सुम्पन सक्ने** : (१) नेपाल सरकारले यस ऐन बमोजिम उठाउँदै आएको सवारी साधन कर नेपाल राजपत्रमा सूचना प्रकाशन गरी नगरपालिका र गाउँ विकास समितिले उठाउन पाउने गरी अधिकार सुम्पन सक्नेछ ।

(२) नगरपालिका र गाउँ विकास समितिले यस ऐन बमोजिम सवारी साधन कर उठाउँदा सो सम्बन्धमा यो ऐन र यस ऐन अन्तर्गत बनेको नियम बमोजिम कर अधिकृतलाई प्राप्त सम्पूर्ण अधिकारहरू प्रयोग गर्नेछन् ।

(३) उपदफा (२) बमोजिम नगरपालिका र गाउँ विकास समितिले असुल गरेको सवारी साधन करको रकम आफ्नो कोषमा जम्मा गर्नु पर्नेछ ।

(४) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल सरकारले आवश्यक देखेमा नेपाल राजपत्रमा सूचना प्रकाशन गरी यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियम बमोजिमका अधिकारहरू प्रयोग गर्न पाउने गरी कुनै अधिकारी वा निकायलाई सुम्पन सक्नेछ ।

---

❃ पहिलो संशोधनद्वारा संशोधित ।

▲ अर्थ सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०४७ द्वारा संशोधित ।

✰ पहिलो संशोधनद्वारा थप ।

⁂ अर्थ सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०५३ द्वारा संशोधित ।

१३. **कर निर्देशकको अधिकार** : यस ऐनबमोजिम कुनै कर अधिकृतले गरेको कारवाई वा निर्णयमा कुनै कारवाईसम्बन्धी त्रुटी भएकोमा कर निर्देशकले कर अधिकृतलाई त्यस्तो त्रुटी सुधार गरी वा कारवाई नियमित गरी पुनः निर्णय गर्न आदेश दिन सक्नेछ ।

१४. **नियम बनाउने** : यस ऐनको उद्देश्य कार्यान्वित गर्न नेपाल सरकारले नियम बनाउन सक्नेछ ।

---

द्रष्टव्य :

१. केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ द्वारा रूपान्तर गरिएका शब्दहरू:
"श्री ५ को सरकार" को सट्टा "नेपाल सरकार"

२. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा "श्री ५ को प्रशस्ति" भन्ने शब्दहरू झिकिएका छन् ।